जगदम्बा प्रकाशन मालाको सोह्रौं ग्रन्थ (१६)

श्री कुनु शर्माको

# कीर्तिपताका

(ललितपुरको वर्णन)

भावानुवाद
योगी नरहरिनाथ

# प्रकाशकीय

ललितपुरका स्वनामधन्य राजा सिद्धिनरसिंह मल्लका पुत्र श्रीनिवास मल्लका समयमा लेखिएको यो कीर्तिपताका त्यस समय (विक्रमीय अठारौं शताब्दीको प्रारम्भको)पाटन नगरको भूगोल र इतिहास दुबै हो भने पनि हुन्छ। श्री कुनु शर्मा भन्ने एक जना ब्राह्मणले यो काव्य बनाएका हुन्। तर ती कुनु शर्माको बारेमा हामीलाई केही पनि ज्ञात छैन। कुनु शर्मा संस्कृतका प्रकाण्ड विद्वान् थिए भन्न यस काव्यमा परेका अशुद्धिहरूले दिदैन तापनि यिनी असल कवि थिए भन्नेमा शंका गर्ने ठाउँ छैन। यिनका श्लोकहरू रसिला छन्—यिनको भाव स्पष्ट छ। जुन टोलको बयान गरे पनि यिनी त्यहाँको तस्वीर उतारिदिन्छन्। सबै टोललाई ' स्वर्गको टुक्रा हो कि ? ' भनी प्रशंसा गर्नु त कविहरूको अतिरञ्जित पार्ने स्वाभाविक धर्मको अनुरूपै होला।

सिद्धिनरसिंह मल्ललाई पनि देखेका यी कविले उनी बारेको पनि केही ऐतिहासिक तथ्य लेखिदिएको भए यो काव्य अझ कति मूल्यवान् हुने थियो। त्यस्तै श्रीनिबास मल्ललाई सर्वगुण सम्पन्न र ईश्वरीय पार्नुभन्दा मनुष्यै पारेर बयान गरिदिएको भए इतिहासको दृष्टिले यो काव्य कति गतिलो हुने थियो इत्यादि भनेर आकाशको फललाई आँखातर्नु भन्दा यसलाई जे छ त्यसै हालतमा स्वीकार गर्नुपर्छ जस्तो लाग्छ।

यो ललितपुरको कीर्तिपताकाको पाण्डुलिपि संवत् २००७ कार्तिक २२ गते श्री योगी नरहरिनाथले पाउनु भएको हो । त्यस ग्रन्थको भावानुवादसमेत गरी योगीज्यूले हामीलाई प्रकाशनार्थ दिनु भएको भण्डै दुई वर्ष हुन लाग्यो ।

योगीज्यूको भनाइअनुसार श्री कुनु शर्माले बनाएका त्रि-शतक तीन शतकको चर्चा धेरै सुनिएको छ । तर तीन शतक ब्रह्मा, विष्णु, महेश्वरका हुन् अथवा ललितपुर, कान्तिपुर, भक्तपुर यी तीन शहरका हुन् निधो पाइएको छैन । तैपनि उपत्यकाका तीन घण्टहरू झैं एक शहरमा एउटा विशिष्ट काम हुनासाथ अरू दुई शहरमा पनि तुरुन्त अनुकरण हुने हुनाले कुनु शर्माको त्रि-शतक तीन पुरका हुनु बढ्ता संभव छ ।

यो कीर्तिपताकामा छुटेको भनी योगीज्यूले 'पटको' टोलको एक श्लोक आफैले पनि तयार पारिदिनुभएको यसै भूमिकाको अन्त्यमा छापेका छौं । तर त्यसरी छुटेको अरू टोल पनि हुन सक्तछ— यो 'पटको' पनि नछुटेको पनि हुन सक्तछ । अहिले नाम भएका धेरै टोलहरू त्यो बेला छँदै थिएनन् कि ?

जे भए पनि करीव तीन सय वर्षअघिको पाटन शहरको वर्णन पढ्न पाउँदा पुरातत्त्वका विद्यार्थीहरूलाई धेरै कुरो थाहा हुनेछ । समाज-शास्त्रीहरूलाई पनि थाहा हुनेछ यो तीन सय वर्षमा पाटन शहरको उन्नति भयो कि अवनति, पाटन शहर फैलेछ कि खुम्चेछ, फैलेको भए कुन दिशामा यो बढ्ता फैलिएछ ? यी सबै कुरामा अध्ययन भए पाटनको आर्थिक सामाजिक (र राजनीतिक पनि) जीवनको सानोतिनो झलक पाइनेछ ।

त्यस्तै किसिमको अध्ययन गर्न खोज्नेहरूलाई सजिलो होस् भनी सानुवाद यो काव्य हामीले छापेका छौं । यो किताप हामी-लाई छाप्न दिने योगीज्यूलाई हामी धन्यवाद भन्छौं ।

अब योगीज्यूले थप्नु भएको श्लोक र अर्थः-

'पटको'

टोल्लेस्मिन् पटकोभिधे विजयते नाट्येश्वरोश्वत्थको
राजेते हरिशङ्करौ च हनुमान् भूतेशविघ्नेश्वरौ ॥
कूपाद्य : परिशोभते प्युपवनं मल्लेष्टदेवालयः
प्राचीन रथ नूतनं वरगृहैः पक्वेष्टकाकुट्टिभैः

[पटको टोलमा नाट्येश्वर, पीपलको रूख, हरिशङ्कर, हनुमान्, भूतेश्वर, पटको गणेश, कुवा, बगैंचा मल्लहरूको इष्टदेवको देवल, नयाँ पुराना राम्रा राम्रा घरहरू र पाका इँटका बाटा, आगन-चोक पटाङ्गिनीहरू छन् ]'

क. दी.

# कीर्ति पताका

## भावार्थ

नत्वा गोरक्षमत्स्येन्द्रौ गुह्यां पशुपतिं तथा ।
अयं कीर्तिपताकाया भावार्थो भण्यते मया ।।१।।

जसको भक्ति गरेर तथा जसका पाउको सेवा गरेर ब्रह्मा, विष्णु, इन्द्र, देव, दैत्यहरू सर्वदा बिघ्न वाधा दूर गर्छन् र समुद्र मथनमा महादेव प्रमुख निखिल देवताहरूले पनि जसको आराधना गरेर सिद्धि पाए । ती यिनै गणेशले तपाईं सबै जनताको दुरित दूर गरून् ।।१।

दुई श्लोकमा–कुनै मानिसहरूले मलाई तेरो घर, ठेगाना, टोल, शहर आदि कहाँ हो ? भनेर सोधे । श्री कुनू नामको म त्यही वर्णन थाल्दछु ॥ २ ॥

मठ, मन्दिर, दरबार, ढुङ्गे धारा, कुवा, घर, चोक, चौतारा, टोल, मण्डप, बाटाहरूका नेपाली नाम पनि भन्दछु ॥ ३ ॥

संसारमा कानले पिउने धेरै सुललित पदका काव्यामृत छन् तथा कसैले निन्दा गर्छन्, तापनि नराम्रो

भए पनि यो २६ टोलको ललितपुरको कीर्ति पताका म लेख्तछु । दोष छन् भने दोषारोप गरून्, हेला गरून्, त्यसमा केही छैन । के राहुको जुठो चन्द्रको अमृत देवताले पिउँदैनन् ? ॥ ४ ॥

अब प्रथम देश वर्णन—नेपाल भूमण्डलमा ललित-पुरी नगरी छ । त्यो गाउँ, टोल, नदी, वन, देवलहरूले स्वर्गबाट ओर्ले जस्तो छ । पर्खाल, खाई २६ टोलहरूले देदीप्यमान ललितपुर योगशास्त्रका पुरुष विशेष ईश्वर र सांख्यशास्त्रका २५ प्रकृतिसमेत २६ तत्त्वहरूको मूर्ति जस्तो सज्जनहरूका स्वभावले धारिएको छ ॥ ५ ॥

खाल सीमा—ललितपुरका प्रान्तमा खाईभित्र उम्रेका अग्ला अग्ला हाँगा भएका रूखहरू शोभित छन् । तिनका टोट्कामा नाना भांतिका जीवजन्तु बसेर बासीरहन्छन् र बाघहरू पनि बास गर्छन्, भय लाग्छ । श्याल, साप, सुगुर, मूसाले माटो खनेका छन् । नाना प्रकार लहराहरूले ठाउँ ठाउँमा कुञ्ज परेका छन् ॥ ६॥

खाल—माछा, कछुवा, गँगटा, भ्यागुता, गोही, सांप, सिध्रा, जुका, बाम, गँडेल, गँदिउला, शिशुमार, सिपी, शंख आदि र अनेक प्रकारका कीराहरूले अति गहिरो खाई अँध्यारो पाताल जस्तो दुबैतिरका अग्ला र घना रूख र लहराहरूका छायाले ढाकी राखेको छ ॥ ७ ॥

पतखाल=पर्खाल–अति उच्चा पर्खालको अद्भुत कथा के भनौं ? जसका भयले भयानक शब्द गर्दै वेगले आएका शुक-आशुग वाणको समूह पनि फर्कन्छ । तिनै लोकको मन्थन गर्न सक्ने गरुडका जस्ता तीखा आँखा भएका त त्यो पर्खाल नाघेर प्रवेश गर्न सक्तैनन् भने अरू भारेभुरे शत्रुको के कथा ? ॥ ८ ॥

देशक्वाट= देशकोट–त्यस पर्खालका ठाउँ ठाउँमा बनेका राजाका युद्धका मोर्चाहरूको कथा के भनौं ? असारका महीनामा उठेका बादलहरू पनि जसका बुर्जामा चढिसक्तैनन् र रून्छन् अर्थात् रून्चे पानी वर्षन्छन् । बुर्जामा लागेका सुनौला कलशलाई सुमेरू पर्वत ठानेर वा राजाका प्रतापाग्निका ज्वाला संझेर निभाउन भनी वर्षा गर्छन् ? ॥ ९ ॥

तध्वाका= त्यसको ठूलो ढोका–ललितपुरका सुन्दर खापा भएका ढोकाभित्र निवास गर्ना निमित्त केवल पुण्यात्माहरूले मात्र प्रवेश गर्न पाउँछन् । जसको पुण्य क्षीण हुन्छ, ती ढोकादेखि बाहिर निकालिन्छन् । जस्तो कि धर्म सकिएका स्वर्गवासीहरूलाई स्वर्गका द्वारबाट निकालिन्छ । क्षीणे पुण्ये मर्त्यलोकं विशन्ति।१०।

प्रथम त्यो निगल टोलको वर्णन गरिन्छ–बुयिनाय-ललितपुरका दक्षिण दिशामा श्रीयुक्त ऋद्धि सिद्धि विशुद्धि फल दिने, सिद्धोत्सव श्री दिने, सिद्धहरूलाई साध्यदेवहरूलाई वर दिने, सर्वदा उत्सवानन्द भएका गङ्गाधर प्रिय गणेश विराजमान छन् ॥ ११ ॥

खिम टोल–जुन टोलमा नाना योग वियोग, संयोग वर दिने योगिनी गणले सेवित भएकी, ब्रह्मा, विष्णु, महेश्वर, इन्द्र, अग्नि, यमराज, निर्ऋति, वरूण, वायु, कुवेर आदि दिक्पालहरूले पाउको सेवा गरिएकी र सिद्ध मुनिले वेदहरूले पूजिएकी गिरिराज हिमालकी पुत्री राजराजेश्वरी पार्वती विराजमान छन् ॥ १२ ॥

त्यसै खिम टोलका कुनु शर्माका घरका आङ्गनका देवीका फूलवारीका जाईका फूलको वासना सुंघेर फूलमा महादेव, माझमा ब्रह्मा, जरामा विष्णु, क्रमशः लीन भए । पात्त पातमा ३३ कोटि देव, देवी देवता लीन भई बसेका छन् ॥ १३ ॥

जुन खिम टोलमा निरन्तर मीननाथ विराजमान छन् । नाना भांतिका बुद्धगण र शाक्य मुनिहरूका साथमा देवताहरू मीननाथको पूजा गरीरहन्छन्, विशाल मन्दिरमा देदीप्यमान सुनौला कलश छ । उत्तम सकल अङ्ग प्रत्यङ्गमा भांति भांतिका भूषणहरू छन् । चम्किलो जवापुष्पका जस्तो शरीरको कान्ति छ ॥१४ ॥

अनि जुन खिम टोलमा मत्स्येन्द्रनाथ विराजमान हुनुहुन्छ र मत्स्येन्द्रनाथका मन्दिरमा सुनौला तिनौटा छाना छन् । अनेकन कृत्रिम पुतलीहरु छन् । चारै-तिर सुनौला उज्याला ढोका छन् । सुन्दर सुन्दर झ्याल छन् । मत्स्येन्द्रनाथले सुशोभित मत्स्येन्द्र मन्दिर विष्णुले शोभित सुमेरु पर्वत जस्तो देखिन्छ ॥ १५ ॥

मत्स्येन्द्रनाथको रूप कस्तो छ ? भने–अग्लो नाक पुष्ट गाला, कुण्डल मंडित कान, सुन्दर जटा, गोल काँक्री जस्तो ओठ, विशाल तिनौटा नेत्रले मुख मण्डल बिजुली झैं चम्चम् चम्कीरहेछ। कान्तिमय किरण भएका सूर्य तथा अग्निका जस्तो तेजिलो गाथ भएका मत्स्येन्द्रनाथ प्रभुका पाउ, इन्द्रादि देवताहरूका मुकुटका रत्नहरूका किरणले झलमल्ल उज्याला छन्॥ १६ ॥

थत्ति टोलका चौबाटामा प्रतिवर्ष जात्रा नाच दीपावली बाजा रथ स्तुति नपुंसक जोक्करहरूको हास्यचेष्टा–विलोकले अवलाहरूका पारस्परिक लीला-वलोकनहरूले कैलासमा देवता तथा प्रमथगणका साथमा महादेव जस्ता मत्स्येन्द्रनाथ लीला गर्नु-हुन्छ ॥ १७ ॥

क्षेत्रपाल–उत्तम क्षेत्र सुन्दर पृथ्वीमा क्षत्रियहरूलाई उत्सव र आनन्द दिने, यक्ष किन्नरहरूका राजा कुबेरादिले पाउको सेवा गरिएका, राजाहरूलाई क्षेम मङ्गल दिने, दीन दुःखीहरूलाई क्षेम कुशल दिने, बिजुली जस्ता चम्किला दाँत भएका, तीखो तरबार र ढाल लिएर चम्कीरहेका, सुन्दर रेशमी लुगा लाएर सुन्दर भएका श्री क्षेत्रपाल विराजमान छन्॥ १८॥

त्यसै क्षेत्रपाल पीठका चौबाटमा प्रतिवर्ष रूद्रध्वजलाई चम्किलो पार्ने, भांति भांतिका मुख गरेका, अनेक प्रकारका हतियार लिएका प्रमथगणका साथमा शहरका ढोका र चोकै उज्याला गर्ने, उच्च अभिलाषा पूरा गर्ने, पूजन कालमा अभय प्रदान गर्ने सबैबाट पूज्यमान मत्स्येन्द्रनाथ विराजमान हुनुहुन्छ॥ १९॥

तंनिग्ल टोलमा नाना प्रकारका मण्डपहरूले मंडित श्रीसम्पत्तिले भरिभराउ भएका घर छन्। सुनौला कलशहरूले, उज्याला देवलहरूले, कुवा र उत्तम धाराहरूले, नाना प्रकारका पीठहरूमा बसेका उत्तम जनहरूले, फूलबारीहरूले ठूलो शोभा गरेका छन्।२०।

एखालखु नामले विख्यात टोल श्री प्रासाद= देवालय विहार सभा मंडप घर नाटक खेल्ने पक्का

चोक भएको श्री भैरवनाथ, नाट्यनाथ, गरूड, शिव, विष्णु र सभ्य देवगण परिवारले स्वर्ग झैं विछट्ट रमाइलो छ ॥ २१ ॥

बाहाललुखा–जसमा सुनौला कलशले देदीप्यमान सुन्दर मन्दिरमा त्रिनेत्र नामका महादेव आफ्ना गण-हरूका साथमा विराजमान छन् । श्रीमान् घरहरूले ललितकला पूर्ण छाना झ्याल उच्च ढोकाहरूले त्यो बाहाललुखा टोल रम्य हर्म्यहरूले कुवेरको अलका झैं सुशोभित छ ॥ २२ ॥

थंवु टोलमा श्रीयज्ञमंडप = अग्निमठ–यज्ञपुरूष सुपात्र दीन दुःखीहरूलाई दान गर्नाले विधियुक्त कुंडहरूले प्रकांड विद्वान् आचारपूत आचार्यहरूले चरूसामग्रीले वेदमा निपुण स्वाध्यायशील मन्त्रोच्चा-रणले उज्ज्वल ऋत्विकहरूले अतिथि अभ्यागतहरूका स्वागत सत्कारले अर्घ्य पाद्य पूजा स्तुति कुश समिधा पायस पञ्च गव्यहरूले घिउले दन्केका ज्वालाले र वेदध्वनिले साक्षात् सत्यलोकाधिनाथ व्रह्माको यज्ञ जस्तै गरी बिराजमान छ ॥२३॥

बह्निह्म टोलमा निरन्तर सुनौला कलशले चम्केका उच्च देवलमा गौरीशनारायण विराजमान छन् । देव-

लमा भाँति भाँतिका कृत्रिम पुतलीहरू बनेका छन् । श्रीमत्तोरण छ । बाहुनहरूका घर छन् ।।२४।।

देवल मठ गणेश उत्तम कुवा सज्जन राजा ब्राम्हणहरूले पूजनीय कृति भएका बुद्धिमान् उपाध्याय-हरूले नाचगान उत्सव आनन्द वेद घोषले ललित थंबु टोल नित्य शोभित छ ।।२५।।

ओल्लाटोल २ श्लोकमा वर्णित छ–जसमा सुन्दर मन्दिरमा श्री सिद्धिलक्ष्मी ईश्वरी विराजमान् छन् । नाना कृत्रिम पुतलीहरूले र तोरणले द्वारले उच्चतम सुनौला कलशले मन्दिर शोभित छ । प्रतिवर्ष जहाँ थालीमा भात लिएर यात्रामा उत्सुकजनहरू नाच गर्छन् ।।२६।।

अनि नाना मंडपहरूले मंडित सुन्दर आँगन बाउडी घर बघैंचा देबालय तांडबेश्वर मन्दिर ब्राम्हणगृह उत्तम कूप सभामंडपहरूले यो ओल्लाटोल स्वर्गबाट ओर्लेकी अमरावती झैं सुशोभित छ ।।२७।।

२ श्लोकमा गाडबाहाल=गाबाहालको वर्णन छ–जुन टोलका चौबाटामा वैष्णवी विराजमान छन् । अनेक मंडपहरूले मंडित उज्याला गल्ली आँगन छन् । नाभि जस्ति अग्ला चौतारामा सुन्दर नाट्योत्सव हुन्छ,

प्रतिवर्ष मत्स्येन्द्रनाथको यात्रा हेर्ने कौतुकले मानिसहरू भेला हुन्छन् ॥२८॥

अनि यात्राहरूले, भाँति भाँतिका ठूल्ठूला घर-हरूका छानाले, झ्याल, ढोका, तोरण, देवल, मठ, गवाक्ष = आँखीझ्याल, ललित श्रीमण्डप, पसलहरूले समय समयमा उत्सव हुंदा यक्षहरूका राजा कुबेरको राजधानी अलका झैं धेरै गुणहरूले गाडबाहाल विराजमान छ ॥२९॥

स्वनिह्म टोल – नाना कलापूर्ण पुतली जडेका उत्तम घर, शिवालय मण्डप र मण्डपयुक्त पोखरी, उज्ज्वल शिलाले, देवी, देवताका देवल, घरका आँगन ब्राह्मण र देवताहरूले र सभ्यहरूले प्रसिद्ध भएर शोभित छ ॥३०॥

नकबहिल नामक टोल – त्यसैका पूर्वतिर फराकिलो राम्रो इटले छापेका बाटा, चोक, चौतारा, मण्डप, तांडव वेदिका घर, धाराहरूले नकबहिल टोल स्वर्गको एक देश आकाशबाट ओर्लेको जस्तो देखिन्छ ॥३१॥

दधलाय नामको टोल – उत्तम जन, घर, आंगन, देवालय, आँखी झ्याल, सुन्दर दुर्गा मन्दिर, मठ, मंडप, उज्ज्वल घर र त्यसका आग्नेय कोठामा देश देशावारक

विविध वस्तु विक्री गर्ने पसलहरूले दथलाय टोल सुशोभित छ ॥३२॥

अनि जहाँ नाना भाँतिका बनावटी पुतलीहरूले झलमल्ल परेका सर्वतोभद्रमंडपमा गणहरूका साथमा श्री शाक्यसिंह मुनि उच्च सुन्दर देवालयमा सूर्य जस्ता चम्किला भूषणहरूले भूषित भएका ऐश्वर्यदाता प्राणी मात्रमा अनुकम्पा गर्ने सर्वार्थसिद्ध बुद्ध विराजमान छन् ॥३३॥

एखाछें टोल – त्यसैका उत्तरतिर धारा, मण्डप, यज्ञशाला, पक्का इटले छापेका भूईं भएका, रास्रा झ्याल भएका घर, सभ्य उत्सव आदिले यक्षपुरी अलका झैं एखाछें टोल रमाइलो छ ॥३४॥

२ श्लोकमा कोमती टोलको बयान छ – त्यसैका पूर्व दिशामा के भनौं अद्भुत कथा छ, कुम्भेश्वर विराजमान हुनुहुन्छ। कुम्भेश्वरको मन्दिर नाना प्रकारका कृत्रिम पुत्रिकाहरूले छाना छानामा सिंगारिएको छ र तोरण अरू देवल, मठ, द्वार, मण्डप र अनेक देवनिकायले सुन्दर हुंदा वाराणसी सरी छ ॥३५॥

तथा गणेश, कार्तिकेय, विष्णु, विचित्र उत्तम ढुङ्गे धारा, देवी, देवताहरूका समूह, भैरव गण, पर्खाल, गल्ली,

गुनीला कलश, पाका इटका बाटा, चोक, गौरीकुंड सरोवरका अमृत रस र फूलवारीका उज्याला फूलहरूले शोभायमान छ ।।३६।।

तीर्थ – गौरीकुंड सुतीर्थका शीतल र पवित्र जलले स्नान गरेर जो देवपितृ तर्पण गर्छन्, या ऋषितर्पण गर्छन्, ती सानन्द स्वर्ग जान्छन् । गौरीतीर्थका जलले शिवको आराधना गरेर सिद्धहरूले तत्काल शिवपद पाए । त्यो जलमा स्नान गर्न पाऊँ भनेर देवताहरू इच्छा गर्छन् भने मानिसको के भन्नु ? ।।३७।।

पुखुडी टोल – त्यस वापीको के भनौं ? अद्भुत कथा छ – प्रति वर्ष नाना प्रकारका केतु बितान चौरहरूले त्यसको सानन्द उत्सव गरिन्छ र त्यसका जलमा अनेक भाँतिसित अद्भुत कौतुकले पौडी खेल्छन्, कुनै हातले, कुनै खुट्टाले, कुनै तल मुख गरेर ।।३८।।

कोबाहाल – जुन टोलमा गिरिजाका पासमा कर्को-टेश्वर विराजमान छन्, देवालय, कठपुतली, ढोका, तोरण, उत्तम सज्जन, नाना मंडपहरूले मंडित मठहरूले राता इटका भूईंले र राम्रा घरले कोबाहाल देवता-हरूले देदीप्यमान अलकापुरी जस्तो छ ।।३९।।

त्यसमा उमामहेश रुद्र विराजमान हुनुहुन्छ। चारैतिर गणहरू निरन्तर परिवारित छन्। उन्नत मन्दिरका सुन्दर गुम्बजका माझमा विविध रूप रङ्गका गणहरूलाई प्रदीप्त पारिरहेका उमामहेश्वरको अलौकिक छवि छ। देवल पनि नाना कठपुतलीले सजिसजाउ, छाना, तोरण, श्रीमंडपहरूले र भव्य इटले छापेका चोक, आँगनले स्वच्छ छ ।।४०।।

सोथ – भिलाक्ष टोलमा राम्रा उत्तम मन्दिरमा नारायण विराजमान छन्। देवलमा सुनौला कलश छ, छानु पनि उज्यालो छ, अनेकन मंडपहरूले मंडित आँगन छ। जसका प्रसादले भावनानुसार आइमाईहरू छोरा पाउँछन् र यस निति पूजा प्रार्थना गर्छन्।।४१।।

त्यसै टोलका ईशानकोणमा श्रीमान् भैरवेश्वरको लिङ्ग विराजमान छ। ललितकलापूर्ण देवलका उज्याला भित्तामा चित्रहरू छन्। अनेक चोक, चौतारा, मंडप, घर, गहिरा कुवाहरूले भिलाक्ष टोल निरन्तर शोभित छ ।।४२।।

यंवि – ओबाहालका अग्ला पर्वताकार चैत्यमा बुद्ध विराजमान छन्। वरिपरि देवगण छन्, भूईं पाका इटले छापिएको छ। आँगन पनि सफा छन्।

प्रतिवर्ष यात्रा उत्सवकालमा नाना प्रकारका नटहरू नाच गान आदिद्वारा आराधना गर्नाले स्त्रीहरूलाई र गाउँलेहरूलाई चिताएको फल दिन्छन् ।।४३।।

त्यसै ओबाहालका उत्तरतिर अति सुन्दर मूर्ति भएका लम्बोदर गणेश छन्, राम्रा मंडपहरूले मंडित आँगन भएका मठहरूले, मन्दिरहरूले र घरहरूले यात्राकालमा नाच, गान, बाजा-गाजा, दर्शक जात्रूहरूले विख्यात ओबाहाल टोल राम्रो छ ।।४४।।

च्याश्च टोल – मठ, मन्दिर, मंडप, घर, धारा, देव, प्रतिमा आदि नेपालमा प्रख्यात छ। आनन्दपूर्वक च्याश्चमा बसेकी दुर्गाको अद्भुत कथा के भनौं ? जसले खड्गका प्रहारले युद्धमा बलिया शत्रु दैत्यहरूलाई गिज्नु भयो ।।४५।।

चंड मुंडको खंडन गर्ने, शुम्भ निशुम्भको स्तम्भन गर्ने, रुंड मुंडको माला लाउने, चण्डिका सुखसाथ विराजमान छन् ।।४६।।

खपिन्छे टोलका नामले ख्यात रथ्यामा चित्र भैरव नाना चित्र विचित्र उत्तम उन्नत घरहरूले र पाका, ढलका, बाटा, चोक, चौताराहरूले तथा नाटयेश्वर

केशव गणेशहरूले त्यो खपिन्छे टोल स्वर्गको एक खण्ड जस्तो देखिन्छ ।।४७।।

नेम्रोत टोल – दोबाटा, चौबाटाले सुन्दर, नाना मण्डपले मंडित, असल मानिसले, देवल घरहरूले, पोखरी उत्तम, गहिरा कुवा, राम्रा सुवासिला फूल फूलेका फूलवारीहरूले, गणपति देवालय शिवालयले स्वर्गकै एक देश हो कि भने जस्तो नेम्रोत टोल छ ।।४८।।

यल मुगलमा सर्वदा देवताहरूका साथमा रुद्र विराजमान हुनुहुन्छ । श्रीमान् मंडपहरूले मंडित श्रेष्ठ मठहरूले, उद्यान उत्तम कूपहरूले, श्रीसम्पन्न घरका ठूला छानाहरूले, अग्निमठहरूले, सज्जनले, राम्रा इटका कुट्टिमहरूले यलमुगल टोल रमाइलो छ ।।४९।।

यंछुटोल पनि नित्य नाना कुट्टिम भएका घर, कुवा, पाटी, माँडु आँगन सुन्दर छाना भएका देवताको स्थिति भएका, भव्य देवल भएको स्वर्गको एक देश जस्तो यछु टोल नित्य रमाइलो छ ।।५०।।

चलपोत टोलमा सिद्धि गणेश विराजमान छन् । परिवार देवतामा भूत पिशाच आदि नाना देवनिकाय छन्, अग्ला अग्ला सुनौला कलशले चम्केको देवालय तोरण मंडपहरूले प्रख्यात स्वर्ग जस्तो टोल छ ।।५१।।

दीपात टोलमा गणेशको स्थापना भएको सुन्दर मण्डप छ। जसमा नाना भांतिका कठपुतली छाना, इटले छापेका पटाङ्गिनी, चोक, चौतारा बाटाले शोभित यज्ञशाला पनि छ र पाका, इटका, घर, आँगन बुद्धका प्रतिमा चैत्य पनि छन् ।।५२।।

भँगीर टोलमा भृङ्गेश्वरी देवता छन्, तिनलाई कुनै सन्तहरू सिद्धि-लक्ष्मी पनि भन्छन् । तिनका साथमा भैरव पनि छन् र गणदेवताहरूले युक्त भएर देवलको शोभा बढाइरहेकी छन् । परेवा पाल्ने घरले भँगीर टोल रमाइलो भएको छ ।।५३।।

दधलाछे टोलमा सिद्धिदायक गणेश छन्, नाना मंडपहरूले मंडित अति ललित गल्ली , पाका, इटले छापिएका छन् । सुनौला कलश भएका शिव, विष्णु-हरूका देवल छन्, श्री लोकेश्वर तथा बुद्ध र अरू देवता, मठ, मन्दिर, चैत्य पनि राम्रा राम्रा छन् ।।५४।।

अनि त्यसैका पूर्वतिर गणसहित बसेका नृत्यनाथ कुवा, धारा , शिवालय, सभ्य देवता, अनेकन कठपुतली तोरण ललितकलापूर्ण दधलाछे टोल स्वर्गको एक भाग जस्तो लाग्छ ।।५५।।

नोग्ल टोल– त्यसैका पश्चिमतिर देवलमा कार्तिकेय हुनुहुन्छ । नाना कठपुतली, छाना, तोरण, मंडप, इटले छापेका बाटाले नोग्ल टोल राम्रो छ ॥५६॥

सुनौला अग्ला, कलशहरूले, अग्ला अग्ला घर, पौवा, देवालय, सुन्धाराहरूले, गगनचुम्बी काञ्चनाचल सुमेरूबाट बर्सेका पानीका धाराले झैं स्वच्छ जल-धाराले निर्मल र शीतल छ ॥५७॥

त्यसै ठाउँमा चौबाटामा गणदेवतासहित वाराही विराजमान छन् । यात्राहरूमा नरनारी भेला भएर विविध क्रीडा उत्सव गर्छन्, श्री मत्स्येन्द्रनाथको रथ यात्रा, स्तुति, प्रभृति प्रतिवर्ष हुन्छ ॥५८॥

नाचका ठाउँमा राम्रा इटले छापेको छ, शाक्य-मुनि बौद्ध प्रसन्न हृदयले शाक्यसिंह सिद्धार्थ तथा विविध सभ्य मन्त्री, द्विज प्रभृतिले इन्द्रका राज्यका खंड जस्तै स्वर्गबाट भूमिमा ओर्लेको नोग्ल टोल छ ॥५९॥

सतिग्ल टोलको २ श्लोकमा वर्णन छ – जुन ठाउँमा नित्य नृत्यनाथ निवास गर्नु हुन्छ, अनेकन छाना, स्वर्ण कलश आदिले शोभिएका मन्दिरले, कठ-पुतलीहरूले, घरहरूले उत्तम धाराले, मठहरूले

यात्राकालमा नाचगान दर्शनमा आएका ठटचौला र गणिकागणले सतिग्ल शोभित छ ।।६०।।

अनि जुन टोलमा चिताएको फल दिने सुन्दर लम्बोदर गणेश छन् । चौबाटामा संसारको सृष्टि स्थिति लय गर्ने हर गणसहित बिराजमान हुनुहुन्छ । नाना मण्डपहरूले मण्डित आँगन भएका पैशाच देव पनि उज्याला छन् र माहेश्वरी पुरी जस्तो श्रीयुक्त सतिग्ल टोल छ ।।६१।।

थंपात टोलमा गणेश आदि प्रमथ गणहरूका साथमा रुद्र विराजमान हुनुहुन्छ । नाना देवताहरूका निकाय छन् । कुवा धाराहरू छन् । शाक्यमुनिका प्रमाणमा निपुण निरन्तर बौद्धहरू पनि रहन्छन् । स्वर्गका खण्डै जस्तो थंपात टोल शोभित छ ।।६२।।

ओकुबाहालमा अमरघट्ट = धर्मघट्ट मानीहरूले सुन्दर, अत्युच्च शिखर भएका मन्दिरमा यमनियमयुक्त पञ्चबुद्ध हरूसहित सत्यवादी मुनि विराजमान छन्, सुनौला कलश, द्वारपालहरूले उज्याला द्वारले सूर्य जस्ता चंकिला भूषणहरूले भूषित शरीर भएका सिद्धार्थदेवताका साथमा सुमेरूमा हरि जस्ता छन्।।६३।।

चाकबाहालमा तीन बाटा मिसिएका ठाउँमा गणदेवतासहित कौमारी बसेकी छन् । साथमा माहेश्वरी वैष्णवी, वाराही,ब्राह्मी, इन्द्राणी, चामुण्डा नारसिंहीहरू पनि विराजमान छन् । स्वर्ग खंड जस्तो चाकबाहाल छ ।।६४।।

ह्लाग्ल टोलको बयान २ श्लोकले–ह्लाग्ल टोलमा पार्वतीका साथमा श्रीयुततन्डेश्वर विराजमान हुनुहुन्छ, श्रीसम्पन्न कुट्टिम आँगन भएका बौद्धालय चैत्यहरू छन् । कौमारी निकटै छन्, ज्योतिमान मंडपहरू छन् । नीतिनिपुण सभ्यहरूले र निर्मल जल भएका कुवाहरूले टोल राम्रो छ ।।६५।।

अनि चौबाटामा देवता र भूतपतिहरूका गण छन् । राम्रा झ्याल भएका घर छन् । श्रीमंडपहरूले मंडित आँगन भएका सम्पूर्ण वस्तु बेच्ने पसल छन् । यात्राकालमा सुनौला देवप्रतिमाहरूको दर्शनले सुन्दर ल्हागल टोल स्वर्गबाट उत्रेको जस्तो देखिन्छ ।।६६।।

हतिग्ल टोलमा प्रचंड मुख भएकी भगवती चण्डी विराजमान छन् र चंड भानु सूर्यसमान तेजस्विनी र चन्द्रमंडल समान सौम्य छन् । प्रचंड ढाल तरवार लिएकी चंड दृष्टिले नै चंडमुंडादि दैत्यलाई दल्ने

चामुण्डादि गणयुक्त प्रचण्ड आयुध लिएकी चण्डिका वर दिन्छन् ॥६७॥

अनि तीन बाटा मिसिने ठाउँमा सुन्दर गणेश मन्दिरले युक्त लक्ष्मी र सरस्वतीका साथमा विराजमान नारायण छन् । बनावटी कठपुतलीहरूले देवल सजेको छ । यसरी हतिगल टोल स्वर्गका देश तुल्य छ ॥६८॥

तवदेवल छ जहाँ गणहरूका साथमा गरूडासन विष्णु नित्य निवास गर्छन् । नाना देवताको स्थापना भएका, सुनौला कलश भएका अग्ला अग्ला देवालयहरूका माझमा रहेको उच्चतम सुमेरूपर्वत तुल्य देवलमा ती नारायण छन् र द्वारमा सिंह छन्, कठपुतलीले शोभायमान छ ॥६९॥

हतपाटल टोलमा चौबाटाको चौमुखे ढुङ्गो चारै वेदले चतुर्मुख ब्रह्मा झैं शोभित छ । सुन्दर मण्डपहरूले मंडित आँगन भएका देवलहरूले हतपाटल टोल चतुर्वर्ग नै मूर्तिमान भएर रमाइलो छ ॥७०॥

मूल चोक—त्यसै पत्थरका उत्तरतिर के भनौं अद्भुत कथा छ। सुन्दर सर्वतोभद्र मंडपमा गणहरूका

साथमा अनेक भूषणले भूषित विराजमान देवी हुनुहुन्छ। अनेकन मंडप छन् र ललितकलापूर्ण कठपुतलीहरूले देवल राम्रो छ ॥७१॥

नृसिंह सुन्दर पञ्चकलश भएका सेता मन्दिरका मध्यमा नरसिंह नित्य प्रतिष्ठित हुनुहुन्छ। हातमा अनेक आयुध छन्। भयानक दाह्राले मुखै झलमल्ल परेको छ। नृसिंहदेवलका साथमा कठपुतलीहरूले शोभित मठहरू पनि छन् ॥७२॥

विष्णुको बयान २ श्लोकले–उत्तम देवल, सुन्दर कला, अनेक छाना, बनावटी पुतलीहरु, अनेक देवप्रतिमा, नाना झ्याल, तोरण, सुनौला अग्लो कलश, द्वारमा उत्तम सिंह, नाना कृत्रिम पुतली प्रतिनिधि उच्च कौतुक भएका देवलमा ॥७३॥ —

विष्णु विराजमान हुनुहुन्छ। संकर्षण विश्वकेतु मदन आदि अवतार र अन्य देवताहरू पनि साथै छन्। हातमा सबैका शङ्ख, चक्र, गदा, पद्म, मुसल, शार्ज वाण, खड्ग, ढाल इत्यादि आयुधले वैकुण्ठ जस्तै छ ॥७४॥

गोपीनाथको (कृष्णमन्दिरको) वर्णन २ श्लोकले–उन्नत सुन्दर शिखरले उत्तम मन्दिर विराजमान छ।

अनेकन सुनौला उज्याला कलशले टाकुराहरूले सुमेरु झैं देखिन्छ, नाना कृत्रिम पुतलीहरूले उत्तम बतासले बजिरहने घण्टहरूले रमाइलो छ, अगाडि गरुड छन् । दशअवतारका मूर्ति पनि साथै छन्, परेवा बसी-रहन्छन् ।।७५।।

यस मन्दिरलाई सौन्दर्य शोभा गुणहरूले कुनै जन सुमेरू पर्वत भन्दछन् । कसैले शिवनिवास कैलाशै हो भन्छन्, केही उच्च शिखर शैलराज हिमाल हो भन्दछन्, कुनै वैकुण्ठ र कुनै स्वर्ग हो भन्छन् । विद्वानहरू यस मन्दिरका उच्च टाकुरामा गणसहित गोपीश्वर विराज-मान छन्, जसरी सुमेरुमा हरि छन् ।।७६।।

विश्वनाथ–नाना कठपुतलीहरूले उज्याला सुन्दर छाना भएका, रात्रा झ्याल भएका, सुनौला कलश भएका, श्रीसम्पन्न द्वारमा हात्तीले शोभा भएका, रात्रा राता इटले छापेका आँगन भएका भव्य मन्दिरमा प्रमथगणहरूका साथमा श्रीविश्वनाथ प्रभु विराजमान हुनुहुन्छ ।।७७।।

मणिकुमार–जसले उच्च वलशाली उद्धत असुर-हरूका राजा तारकासुरलाई मारे, जसले देव दैत्य भयदायक रणांगणमा दैत्यहरूलाई चूर्ण पारे ती

रुद्रबाट जन्मेका, कामदेवभन्दा पनि सुन्दर, रातो कुसुम जस्तो रंग भएका मुजुरका वाहनमा चढेका मणिकुमार मन्दिरमा विराजमान छन् ॥७८॥

भीमसेन–उतुंग बलले उद्धत भएर द्वन्द्वयुद्धमा कीचकलाई पिँडो पारे,जसले क्रोधगरेर महा भारतका लडाइँमा सबै कौरवहरूको चूर्ण पारे, ती वली भीमसेन हातमा गदा लिएर गणहरूका साथमा साक्षात् भीषण शरीर धारी दण्डधर काल जस्ता लोकोत्तर देखिन्छन ॥७९॥

अनि जसका कृपाले वणिक्जनहरू शीघ्र सुख लाभ गर्छन् । जो दुश्शासनका कायलाई ओछ्याएर वज्र कवच धारेर छातीमा बसेका छन् । नाना कृत्रिम जातका वस्तुको रचना गरेका, जन्तुहरूका रगतले युक्त भएका, देवालयमा ती भीमसेन गणहरूका साथमा बसेका छन् ॥८०॥

कोपेश्वर–जसले कोप गरेर हेर्दा अग्नि ज्वालाले कामदेवलाई भस्मसात पार्‍यो । तीनै लोकमा कहलिएको सुन्दर रतिपति मदन तीनै लोकलाई वश गर्थ्यो, भीषण क्रोधले सिंहनाद गरेर कानसम्म बाण तानेका अद्वितीय वीर ती कोपेश्वर विराजमान छन् ॥८१॥

मणिगणेश–श्रीमान् मंगलदायक मणिधर मान र अपमानदेखि रहित, मान्य र मान्य मनस्वी विद्वान्-हरूका मंगलकारक, मान्यता प्रदान गर्ने मंगलमूर्ति, मंगलमय मोक्षदायक, हातमा लड्डु लिएका उज्याला झलमल्ल परेका, मूसाका सुन्दर आसनमा बसेका मणिगल ( मानगृह ) मा मणि–गणेश विराजमान छन् ॥८२॥

सिथमदु सुन्दर कठपुतलीले उज्यालो मठ, रंग विरंगका नानावर्ण ग्रन्थहरू प्रतिवर्ष यात्रामा सुशोभित हुन्छन्, चंकिला देवप्रतिमाहरू ललितकलाले बनेका छन् । स्वर्गदेखि त्यहाँ आएर इन्द्र झैं गण र दिग्गजहरूले सुशोभित छन् ॥८३॥

मणिछे–हृदय कमलमा जसको ध्यान देव, दैत्य, मानिस, सिद्ध, यक्ष, किन्नर, गन्धर्व, गुह्यक, मुनिगण नाग तथा राक्षसहरू गर्छन् । श्रीदुर्गाका उत्सवले आनन्दित भएका प्रतिवर्ष आरती गरेर सेवा पूजा गर्छन् ती देवी गणहरूका साथमा स्वर्गबाट आएर झैं बसेकी छन् ॥८४॥

मणिधारा – ललितकलापूर्ण सुनौला सुनधारा शोभित छ । नाना कारीगरी वेल-बुट्टा प्रतिमाले सुन्दर

देखिन्छ । सुनका पर्वतबाट उभ्रेकी त्रिपथगा गङ्गा झैं स्वच्छ र जलधाराको पानी खाएर मानिसहरू तुरन्त प्यास र तापबाट छुट्छन् ॥८५॥

मणिमण्डप–श्रीयुक्त मणिमण्डप देदीप्यमान छ । कलापूर्ण झ्याल छन्, उज्याला नाना प्रकारका कृत्रिम कठपुतली, छानाहरू पनि सुन्दर छन्, समय समयमा नाच गर्ने चोक आंगनहरूमा र झ्यालमा नाच हेर्ने मान्छे र नटहरूले रमाइलो मणिमण्डप झन् रमाइलो हुन्छ ॥८६॥

मणिगल–अग्ला अग्ला सुनौला कलशहरूले राम्रा छानाहरूले र तोरणहरूले, नाना प्रकारका कठपुतली-हरूले झ्यालहरूले, श्रीसम्पन्न मण्डपहरूले मण्डित अद्भुत आंगनहरूले, राम्रा इटका पटांगिनीहरूले र भूईंहरूले र सभ्यहरूको मणिगल = मानगृह देवताहरूले अमरावती जस्तो छ ॥८७॥

मणिनाग मानदेवले बनाएका मानगृह (मणिगल) दरवारमा ऐतिहासिक मणिनाग नामको सुन्दर मूर्ति नित्य निरुपम छविले विराजमान छ । नाना नागहरूका मणिका कान्तिले जसको देह चम्किरहेछ । नागराज वासुकी झैं पासमा बसेका नागहरूका मुखले नारायणका

पूर्वजका अंश जस्ता मणिनागराज पृथ्वीतलमा देदीप्यमान छन् ।। ८८ ।।

मणिकेशवको बयान २ श्लोकले–लक्ष्मीसहित मणिकेशव सर्वतोभद्रमण्डपमा विराजमान छन् । अति ललित कठपुतली, झ्याल, नाना प्रकारका सुन्दर चित्र, विचित्र चर्चित समुच्चय देवताल सुन्दर इट छापेका भैं भएका अनेक माङ्गलिक उत्सव भएका समुद्रमा झैं मणिकेशव विराजमान छन् ।। ८९ ।।

अनि मान्य मङ्गलकारक मुनिगणले सेवित र अपमानदेखि दूर मालाहरूले सजिसजाउ शरीर भएका मणिगणले मण्डित मुकुट भएका शंख,चक्र,गदा, पद्म समातेका वक्षस्थलमा कौस्तुभ मणि लाएका मणि केशव सुन्दर छन् ।।९० ।।

म्हुलदेवलको बयान २ श्लोकले–त्यसैका दक्षिण दिशामा के भनौं अद्भुत कथा छ। सुन्दर देवीको मन्दिर छ। त्यसलाई कुनै जन सुमेरु पर्बत भन्दछन् । कुनै ब्रह्मलोक भन्छन् । कसैले लोकालोक पर्वत भनेका छन् र केहीले त्रिकुट लङ्काचल भनेका छन् । कुनै त विष्णुलोक हो भन्छन् । कोही कोही भने साक्षात कैलास हो भनेर त्रैलोक्य–जननी तुर्या = तुरीया =

तुर्जा = तुलजा = तुलजा = तलेजुका सर्वोच्च देवलको उल्लेख गरेका छन् ।। ६१ ।।

माथि भनिएका मन्दिरमा गिरिजा पार्वती बस्नु हुन्छ । त्यसको गजुर अति उच्चा छ । सुन्दर कृत्रिम योगिनीगण छन् । अनेक सुन्दर झ्याल तोरण छन् । सुनौला छाना छन् । नीला शिलाको भैं छ । राम्रा इटको चौतारा छन् ।।६२ ।।

ती देवी दुर्गाका विस्मयकारक उत्सव प्रतिवर्ष दशैमा हुन्छन् । राँगा, बोका, भेंडा, हाँस, कुखुराहरूका बलि चढ्छन् । जनता जात्रा हेर्न आउँछन् । बन्दूक पटकाएर बढाइँ हुन्छ । आरती पूजा हुन्छ । दीपमाला बालिन्छ । सब प्रकार रमाइलो स्वर्ग जस्तै हुन्छ ।।६३।।

उद्यान पारिजात, जवा, चाप, धतुरो, जुई, हसना, रातकी रानी सिवाली, करवीर,कुन्द,केवरा आदि फूल फुलेर ढकमक्क फुलवारी रमाइलोछ ।। ६४ ।।

पुखुला बगैचाभित्रको पोखरीमा पहेला कमल फुलेका छन् । किनारमा अरू अनेक रङ्गका फूल फुलेका छन् । सङ्लो पानी छ । माछा कछुबा चरीरहेछन् । एकातिर ढुंगेधारो सुन्दर छ । हिमाल कैलासमा मानसरोवर झैं पोखरीमा नाना जलचर पंछीहरू खेलीरहेछन् ।। ६५ ।।

नाटचेश्वरको फूलबारी उद्यानमा गणहरूका साथमा श्री नृत्यनाथ विराजमान छन् । नाना भाँतिका कठपुतलीहरूले मण्डप शोभित छ। दारिम, केरा, सुन्तला, बिजौरा, वेलौती आदि नाना फलफूल फलेफुलेका छन् । एकातिर बाघ खोर हात्तीसार छन् ।। ९६ ।।

तवकेवटोलमा श्री पुरुषोत्तमका सुन्दर मूर्ति नित्य विराजमान छ, चार अरू राम्रा मूर्ति छन् । पाँचौं आफै छन् । शंख, चक्र, गदा, पद्म, मुसल, ढाल, तरवार, धनुर्वाण लिएका छन् र महादेवका जस्ता पाँच मुख छन् ।। ९७ ॥

त्यसै देवलनिरएउटा कुवा छ । ढुंगे उपनाह छ। सङ्‌लो पानी गैरो छ, हेर्दा डरलाग्छ, जुन कुवाको चीसो पानी खाएर तिर्खा लागेका मान्छे सन्तुष्ट हुन्छन् । जस्तो गङ्गाजल खाई नुहाईकन पाप तापबाट छुटछन् ।। ९८ ।।

गोपीश सदा गरुडका साथमा शोभित छन् । बन्धूक पुष्प झैं राता ओठ, उन्नत नाशावंश, राम्रो पगरी, भोटो पहिरेको, कमलदल विशाल लोचन, बाजुबन्द, औंठी माला र हारहरूले गोपीनाथ राम्रा छन् ।। ९९ ।।

चुक = चौक राम्रा राम्रा झ्याल झ्यालले, नाना

रङ्गका चित्रहरूले, अनेक कृत्रिम पुतलीहरूले, उज्याला दरवारका भित्री उत्तम घरहरूले, नारीहरूका नेत्ररूपी भमराहरूले ललित भएको त्यो सर्वतोभद्रमण्डप शोभित छ ।।१०० ।।

राजसभाको वर्णन २ श्लोकले—आस्थान = राजसभा उत्तम उत्तम चारै वर्णले सदा शोभा सम्पन्न छ। बुद्धिमान् मन्त्रिगणले,पण्डितजनहरूले,दण्डनीतिज्ञहरूले, नाना देशका मानिसहरूले, गुणिगणले,पासमा उभिएका सेवकहरूले, नाना याचक र वन्दीजनहरूले, असल मान्छेहरूले र सन्तहरूले राजसभा नितान्त सुशोभित छ ॥ १०१ ॥

अनि वेदध्वनी ललितपदार्थ कविताश्लोक कलाकार बुद्धिमानहरूका गुणग्रहण सम्राटको नीतिविचार विविधमन्त्रले उज्ज्वल मन्त्रीहरूले र नाना रङ्गले रंगाएका मखमली, रेसमी, उनी आसन चवरहरूले तथा वन्दीजनका स्तोत्र र गीतका सुन्दर स्वरले देवताहरूले देवसभासुधर्मा झैं त्यो राजसभाको शोभा छ ।।१०२ ॥

राजाको वर्णन—त्यस सभामा श्रीयुक्त राजा श्री निवास मल्ल मन्त्रीहरूले,नाना शस्त्र लिएका अङ्गरक्षक सैनिकहरूले शत्रु जित्ने योद्धाहरूले वेदपरायण विप्रहरूले

परब्रह्मज्ञ वेदान्तवेदीहरूले, प्राज्ञ नाटक, काव्य, कोष, व्याकरण,शास्त्रनिपुण विद्वान्हरूले सुशोभित छन्।।१०३।।

जसरी श्रीपति देवदानव, यक्ष, किन्नर, अश्वमुख, यमदूत,नाग, नर, सज्जन, सिद्धमुनि,मौनी, ग्रह, नक्षत्र, प्रभृति आत्मा र उच्च विचारका हृदयमा विराजमान छन् । त्यसै गरी मन्त्रिगणसहित राजा श्रीनिवास मल्ल गोष्टीमा छन् ।। १०४ ।।

श्रीनिवास मल्ल संसदमा विराजमान छन् । जपा-पुष्प र गोल काँक्री झैं राता ओठ छन् । प्रफुल्ल कमल तुल्य मुख छ । फुलेका नील कमल जस्ता नेत्र छन् । कोकिलका समान कण्ठस्वर छ । शंख जस्ता तीन रेखा भएको गलो छ । घुँडासम्म लम्केका हात छन् । सुन्दरताका चरम सीमामा पुगेका राजाका पाउमा अरू राजाहरू वन्दना गर्छन् ।। १०५ ।।

पूर्णमासीका चन्द्रमण्डल जस्तो मुखमण्डल भएका, अमृतसदृश वचन भएका, विस्तीर्ण विशाल उज्ज्वल लोचन भएका, सुग्रीवका जस्तो ग्रीवा भएका, अति सुन्दर शरीर भएका चाक्लो छाती भएका शत्रुलाई काटने खड्ग हातमा लिएका, गम्भीरवाणी रव भएका, भूपालेन्द्र हरूका मुकुटहरूले मण्डित चरण भएका राजा श्रीनिवास मल्ल छन् ॥१०६॥

दैत्यहरूका सभामा प्रह्लाद झैं, देवताहरूका समितिमा इन्द्र झैं, मानिसहरूका समाजमा विद्वान् झैं, यक्षहरूका संसदमा कुवेर झैं, नागहरूका मण्डलमा वासुकी झैं, तपस्वीहरूका मण्डलीमा ब्यास झैं, तारागणमा चन्द्रमा झैं, ग्रहहरूमासूर्य झैं, सभासदहरूमा राजा श्रीनिवास मल्ल विराजमान छन् ॥१०७॥

राम नाम श्रवणले पवित्र कान भएका, नारायणपादुका पद्म मकरन्द पान गर्नाले पवित्र मुख भ्रमरभएका, मृत्युञ्जय महेश्वरको पूजामा सदा तत्पर रहनाले पवित्र दुबै हात भएका, ब्रह्मचिन्तनले पवित्र चित्त भएका, राजा श्रीनिवास मल्ल छन् ॥१०८॥

राजा श्रीनिवासमल्ल राज्यले इन्द्र, प्रतापले अग्नि, न्यायले धर्मराज, सेनाले निरृति, शीतल गुणहरूले वरुण, प्रवल वलले र निरन्तर गतिले वायु शिवभक्तिले यक्षराज कुबेर, ऐश्वर्यले महेश्वर शिव झैं विराजमान छन् ॥१०९॥

भूपति,श्रीनिबास मल्ल प्रतापले सूर्य छन्, आल्हादकताले चन्द्र छन्, धनले कुबेर छन्, देवताहरूले इन्द्र छन् सुताप = तपस्याले पवित्र अग्नि छन् ॥११०॥

विद्याले उज्यालो कलेवर भएकाको किलका जस्तो

श्वर भएका, सत्प्राज्ञ उज्ज्वल जिब्रो भएका, दानले उज्याला करकमल भएका करुणापूर्ण कटाक्ष भएका, सत् शास्त्रहरूको श्रवणले उज्याला कान भएका, शत्रु रूपी समुद्रको मथन गर्ने मन्दराचल भएका, ब्रह्मचिन्तक उज्याला राजा श्रीनिवास मल्ल समितिमा सुशोभित छन् ।१११।।

सग्राम सागरमा सेतुस्वरूप आफ्ना सेनाले र बाहु-वलले शत्रुहरूलाई दल्नामा मल्ल (पहलमान) राजा-हरूका किरीटका रत्नहरूले शोभित पाउ भएका, आत्मोदयशक्तिले सन्धि, विग्रह, यान,आसन, द्वैधीभाव, संश्रयका छ गुणले बलियो राजनीति भएका, षाड गुण्य निपुण मन्त्रीहरूले स्वर्गमा इन्द्र झैं राजा श्रीनिवास मल्ल विराजमान छन् ।।११२।।

श्रीमान् सिद्धि नरसिंह मल्ल राजाका नाना विधिका दानहरूले कल्पबृक्ष,सुमेरु पर्वत, कामधेनु गाई, वसुन्धरा पृथ्वी र इन्द्र पनि शंका मान्दछन् । प्रचण्ड मार्त्तण्डका प्रखर किरणहरूदेखि पानी डराए झैं न्यायनिपुण गुप्तचर बुद्धि अस्त्र शस्त्र शुद्धान्त प्रकृति र प्रतापका अग्निदेखि शत्रुहरू जलिरहेछन् ।।११३॥

विप्रहरूका कामधेनु, मान्छेहरूका कल्पबृक्ष, नारी-

हरूका कामदेव, शत्रुहरूका यमराज, मित्रहरूका आनन्द मूर्ति, दुष्टहरूका अनुशासक, नरवर भूपालचूडामणि राजा भूतहरूका शरणदाता केशव जस्ता सर्व स्वरूप भए ॥११४॥

जसरी पूर्वकालमा हिमाल पर्वतलाई बाछो बनाएर कुलाचलहरूले महौषधी रत्नहरूको दूध गोरूप पृथ्वी-बाट दोहेथे । त्यस्तै गरी आफ्ना गुणको बाछो बनाएर तदाश्रित देशका जनता र विप्रहरूले पृथ्वीश श्रीनिवास मल्लबाट घर, खेत, धन, सुन, चाँदी, वस्त्र, रत्नहरूको दूध दुहुन्छन्।।११५।।

यस श्रीसम्पन्न सुन्दर राजसभामा विद्याले उज्यालो शरीर भएका भाइ ज्योतिनरसिंह मल्लका साथमा राजा श्रीनिवास मल्ल उसै गरी सुशोभित छन् । जसरी उपेन्द्रका साथमा इन्द्र, अर्जुनका साथमा भीम, कृष्णका साथमा बलराम, लक्ष्मणका साथमा राम सुशोभित थिए ।।११६।।

श्रीनिवास मल्ल राजाका दक्ष आँखाले क्रोधको उपाधिले हेर्दा शत्रुहरू जल्छन् । हर्षका उपाधिले हेर्दा ललनाहरू मोहित हुन्छन् । हृदयस्पर्शी करूण दृष्टिरूपी सूर्यले सज्जनहरूको दरिद्रतारूपी अन्धकार दलिएको छ ॥११७॥

